# फयङ साँबा

# वंशावली



डा. नवराज सुब्बा

HAMRO IDEA

# भूमिका

कुनै समुदायलाई मानवशास्त्रीय दृष्टिले अध्ययन गर्दा उसलाई विश्व समुदायको एक सदस्यका रूपमा चिनाउनु पर्ने हुन्छ। त्यसैले यो लेखकले 'किरात लिम्बू संस्कृति–मावशास्त्रीय विवेचना' मा फयङ साँबा वंशावली समेटेको थियो। फयङ साँबा परिवारको पहिचान साँबामा सीमित नराखेर त्यसलाई साँबा, सेन, राय, किरात, सुमेर, काशी (खाम्बोङबा) मा विस्तारित ब्याख्या र विश्लेषण त्यहाँ गरिएका छन्। यद्यपि, विषयवस्तुको गहिराइलाई सहज र सान्दर्भिकतालाई सजीव तुल्याउन लेखलाई पुनर्लेखन गरिएको छ। वंशावलीको खाका सरसर्ती हेर्न चाहने पाठकलाई मध्यनजर गरी 'फयङ साँबा वंशावली' पुस्तक तयार पारिएको छ।

यस पुस्तकमा फयङ साँबाको पहिचानलाई केन्द्रविन्दु मानेर लेखनकार्य भएको छ। कुनै जातिको विकास कसरी हुँदोरहेछ भन्ने दृष्टान्त यहाँ देख्न सकिन्छ। आज किरात, राई, लिम्बू शब्दको चर्चा चलेको बेलामा यसले केही सहयोग पुऱ्याउन सक्दछ। यद्यपि, अध्ययनका सीमा छन्।

आफ्नो संस्कृति र पहिचानमा गर्व गर्ने सबैको अधिकार छ। अध्ययनमा उठेका सवालहरूको ब्याख्या गर्दा यदि कसैको भावनामा ठेस लागेमा यो लेखक क्षमाप्रार्थी छ। यो अध्ययन फयङ साँबा परिवारको आग्रहमा गरिएको भए तापनि यसमा कसैको आर्थिक सहयोग, आग्रह, पूर्वाग्रह ग्रहण गरिएको छैन। पारिवारिक सूचना संकलनमा फयङ समुदायको योगदान अवश्य छ। यद्यपि लेखक स्वयमको रूची र प्रयासले शोधकार्य सम्भव भएको हो।

यो अध्ययनमा मुन्धुम, प्रजाति विवरणलाई प्राथमिकता दिइएको छ। इतिहास, पुरातत्व, भाषाविज्ञान जस्ता मानवशास्त्रका क्षेत्रलाई आधार मानिएको छ। यसमा तथ्य र प्रमाणलाई मानवशास्त्रीय दृष्टिले विवेचना गरिएको छ। विश्लेषणमा गरिएका स्रोतलाई संन्दर्भसूचीमा देखाइएका छन्। यसर्थ, यो मेरो प्रयासलाई एक प्राज्ञिक जमर्कोको रूपमा हेरिदिनहुन आग्रह गर्दछु।

म आफू एक स्वतन्त्र लेखक वा अन्वेषक भएको महसूस गर्दछु। समुदायसंग सम्बन्धित समसामयिक सवालमा चर्चा उठे तापनि ती सान्दर्भिक र स्वभाविक रूपमा मात्र प्रस्तुत भएका छन्। कुनै अभियानको पक्ष र विपक्षामा जानाजान अघि सारिएका तथ्य र विचार होइनन्। स्मरण रहोस्, कुनै अभियान, सम्प्रदाय, मतको स्वार्थसंग लेखकको कुनै अनावश्यक सरोकार छैन। यो अध्ययनले किरात लिम्बू समुदायको संस्कृति, इतिहास, ब्यवहारको अध्ययन गर्न चाहने शोधकर्ता तथा नेपालको संस्कति जान्न खोज्ने जिज्ञासुलाई सहयोग गर्ने आशा गर्दछु।

अन्तमा, यो अध्ययन अघि बढाउन मलाई साथ दिने ऐतराज फयङहाङ साँबा हाङपाङ, ताप्लेजुङ, धिरेन्द्र फयङहाङ साँबा हाङपाङ, ताप्लेजुङ, मानबहादुर फयङहाङ साँबा धरान, सुनसरी, टेकबहादुर लिम्बू धरान, सुनसरी, हाल– बेलायतलाई हार्दिक धन्यवाद तथा आभार प्रकट गर्दछु।

साथै, मोहनचन्द्र फयङहाङ साँबा मेवाखोला साँबा ताप्लेजुङ, प्रेम फयङहाङ साँबा लिम्बू, भुटान, योगराज फयङहाङ साँबा, सिक्किम, रामबहादुर फयङहाङ साँबा, पाँचथर, मनाहाङ फयङहाङ साँबा, सङ्खुवासभा, चन्द्र फयङहाङ साँबा, ललितपुर, कौशलराज सुब्बा ललितपुर र निश्छलराज सुब्बा, विराटनगरलाई महत्वपूर्ण योगदानका लागि हार्दिक आभार तथा धन्यवाद दिन चाहन्छु।

लेखन कार्यमा मलाई ज्ञानको ज्योति दिने मेरा अग्रज लेखक तथा अन्वेषक जसलाई मैले सन्दर्भसूचीमा उल्लेख गरेको छु, उहाँहरूप्रति ससम्मान आभार प्रकट गर्दछु। धन्यवाद।

डा. नवराज सुब्बा
विराटनगर, नेपाल
२०८० साल (सन् २०२३)

# विषयसूची

# कृतज्ञताज्ञापन

१. ऐतराज फयङहाङ साँबा, हाङपाङ, ताप्लेजुङ, नेपाल, फयङ साँबाको प्रारम्भिक वंशावली सङ्कलक।
२. मानबहादुर फयङहाङ साँबा, धरान, सुनसरी, नेपाल, फयङ साँबा मुन्धुम पाण्डुलिपि उपलब्धकर्ता।
३. टेकबहादुर लिम्बू, धरान, सुनसरी, हाल– बेलायत, फयङ साँबा उत्पत्ति मुन्धुमका एक स्रोत–व्यक्ति।
४. मोहनचन्द्र फयङहाङ साँबा, मेवाखोला साँबा ताप्लेजुङ, नेपाल, फयङ साँबा वंशावलीको लागि मेवाखोला क्षेत्रको वंशावली तथा तथ्याङ्क सङ्कलक।
५. धीरेन्द्रराज फयङहाङ साँबा, हाङपाङ, ताप्लेजुङ, नेपाल, फयङ साँबा वंशावलीको लागि बैठकभेला संयोजक तथा तथ्याङ्क सङ्कलक।
६. प्रेम फयङहाङ साँबा लिम्बू, भुटान, फयङ साँबा वंशावलीको लागि भुटानको वंशावली सङ्कलक।
७. योगराज फयङहाङ साँबा, सिक्किम, भारत, फयङ साँबा वंशावलीको लागि सिक्किम, भारतको वंशावली सङ्कलक।
८. रामबहादुर फयङहाङ साँबा, पाँचथर, नेपाल, फयङ साँबा वंशावलीको लागि पाँचथरको वंशावली सङ्कलक।
९. मनाहाङ फयङहाङ साँबा, सङ्खुवासभा, नेपाल, फयङ साँबा वंशावलीको लागि संखुवासभाको वंशावली सङ्कलक।
१०. चन्द्र फयङहाङ साँबा, ललितपुर, नेपाल । सहजकर्ता ।
११. कौशलराज सुब्बा, महालक्ष्मी नगरपालिका–४ ललितपुर, नेपाल, सूचना–प्रविधि सहजकर्ता।
१२. निश्छलराज सुब्बा, विराटनगर महानगरपालिका–५ मोरङ, नेपाल, सूचना–प्रविधि सहजकर्ता।

# पुस्तक परिचय

वंशावली भनेको पुरुष वा पितृ, पुत्र वा दरसन्तानहरूको क्रमिक नामावली हो। जैविक नाता र सामाजिक सांस्कृतिक अनुकूलनबाट वंशावलीको विकासक्रम भएको पाइन्छ। त्यसैले कुनै जातिको उत्पत्ति, विकास र व्यवहारको अध्ययन गर्ने काम वंशावलीमा गरिन्छ। यो जातीय ज्ञानले एकातिर उनीहरूको पौराणिक, ऐतिहासिक धरातलको उदघाटन गर्दछ भने अर्कातिर सामाजिक र सांस्कृतिक विकासक्रमलाई उजागर गरिदिन्छ।

वंशावलीलाई वंशवृक्ष पनि भन्ने चलन छ। तर वंशावली र वंशवृक्षमा मैले तात्विक अन्तर पाएँ। वंशवृक्षमा भनिए झैँ बोटको काण्ड र हाँगामा विकास भए जस्तो विकासक्रम जातीय वंशावलीमा पाइँदैन। वंशभित्र मिसल भाइ वा मानस पुत्रको पनि व्यवस्था हुन्छ। कुनै थर, जाति, राष्ट्र (साँबा, लिम्बू, राई, किरात आदि) मा वंशानुगत वा जैविक नाताको बाहुल्य भए तापनि समावेशी अङ्गको उपस्थिति पनि महत्वपूर्ण रूपमा रहेको हुन्छ।

त्यसैले वंशवृक्ष शब्दले एउटा भ्रम सिर्जना गरिदिएको छ। मानिसले आफ्नो जातिको उत्पत्तिको कल्पना गर्दा कुनै रूख वा हाँगासित तुलना गर्ने गर्दछन्। वर्तमानमा एकै थरका सन्तानका जैविक पिता एकै भएको विश्वास गर्ने गरिन्छ। यही भ्रम चिर्न वंशवृक्ष भन्दा वंशावली शब्द बढी उचित देखिन्छ। यद्यपि, पुस्तकमा मैले दुवै पदावली प्रयोग गरेको छु। कारण मलाई के विश्वास छ भने मैले प्रस्तुत गरेका वंशक्रम वस्तुगत भन्दा बढी ढाँचागत नामावली हुन्।

इतिहास र वंशावली केलाउँदा थाहा हुन्छ, साँबा परिवारमा फयङ उपथरको उदय करिव ३०० वर्ष अघि भयो। त्यसै गरी सेन राई समुदायबाट साँबा वंशको उदय करिव ७०० वर्षअघि भएको अनुमान गरिन्छ। सेनको उदय भने किरात समुदायमा हजारौँ वर्षअघि भएको ऐतिहासिक प्रमाण भेटिन्छन्।

यो भनाइ साङ्गपाङ्ग ढाँचा हो। हामीसित आज सेन र किरात इतिहासबारे तथ्य, प्रमाण वा सामग्री उपलब्ध छन्। ती प्रमाण वा अभिलेख वृहद् रूपमा छरिएका अवस्थामा भेटिन्छन्। तर साँबा समुदाय वा फयङ परिवारको इतिहास र ज्ञान भने सीमित परिवारमा खुम्चिएर गएको छ। यसका धेरै तथ्य लुप्तप्रायः भैसकेका छन्। बचेखुचेका प्रमाण र ज्ञानका आधारमा साँबा फयङको वंशक्रम कोर्ने काम यहाँ भएको छ।

थर वा उपथर उत्पत्तिस्थल अर्थात् माङ्गेना यक लिङथाङ यकमा यो साँबा पुर्खा कहाँबाट कहिले किन आयो र कसरी विकसित भयो यहाँ खोतल्ने काम भएको छ। फयङ साँबा समुदाय विश्व समुदायको एक सदस्य भएकाले घटनाक्रम, परिवेश र पात्रसित भएका विवरण यहाँ आएका छन्। साँबाबाट फयङ परिवारमा छुट्टिएपछिको वंशवृक्षको रूपरेखा यहाँ लिपिवद्ध गरिएको छ।

यो वंशावलीलाई एक नमूना मान्ने हो भने यसले जनाएका धेरै सन्दर्भ र सामग्री अन्य समुदाय अध्ययनमा पनि काम लाग्नसक्छन्।

# अध्याय १ परिचय

## १.१ फयङ परिचय

फयङ साँबा किरात–सेन वंशी एक समुदाय हुन्। यिनीहरू किरात–सेन सभ्यतासित आवद्ध जाति हुन्। फयङ संज्ञाले किरात साँबा परिवारको एक लिम्बू/राई सदस्यलाई जनाउँछ।

फयङ थर रहनुमा एउटा रोचक किंवदन्ती छ। उखान अनुसार फयङ थर उत्पत्ति उसले लगाउने पहिरनको आधारमा भएको थियो। लिम्बू भाषामा फयङको शाब्दिक अर्थ हो– झल्लरी, फूल फक्रनु। उसले लगाएको लुगा फयङ–फयङ झल्लरीझैँ हल्लिएको हुँदा त्यही अनुकरणात्मक शब्दद्वारा उसको चरिचायक फयङ उपथर रहन गयो।

यही आधारमा साँबा परिवारकै अर्का सदस्यको पनि उपथर रहन गएको थाहा हुन्छ। साँबा परिवारका फेन्छाङ्वा उपथर व्युत्पत्ति पनि पहिरनबाटै भएको लेखकीय विश्लेषण छ। लिम्बू भाषा अनुसार फेन भनेको लगौँटी वा धोती, चाङ भनेको लगाउने लुगा र बा भनेको लगाउने मानिस हो। यी दुई शब्दको योगले धोती लगाउने मान्छे बुझाउने गरी फेनचाङ्बा हुँदै फेन्छाङ्बा उपथर बनेको हुनसक्दछ।

सामान्यतः समय, घटना, सन्दर्भसित गाँसिएका सन्दर्भ र विशेषताका आधारमा थर वा उपथर बनेका पाइन्छन्। साँबा परिवारमा पहिरनलाई नै पहिचानको रुपमा मान्नु पर्ने अवस्था कसरी अयो भन्ने सम्बन्धमा विश्लेषण गर्न सकिन्छ। तत्कालीन समाजले उक्त पहिरनलाई अनौँठो देखेकोले मान्छे चिन्नलाई नाम दिएको हुनुपर्दछ। यसरी पहिरनका आधारमा हेर्दा यी साँबाहरू मधेशबाटै पहाड उक्लेका जाति हुन् भन्ने मुन्धुमी तथ्यलाई बल पुग्दछ।

यिनीहरूको बसोबास ताप्लेजुङ, पाँचथर, संशुवासभा, सुनसरी, मोरङ, झापा, ललितपुरमा रहेको छ। हाल यिनीहरू सिक्किम, भुटान, नागाल्याण्ड तथा बेलायतसम्म फैलिएका छन्।

जेहोस्, यिनीहरूको मूल थात थलो, माङ्गेना यक भने पूर्वी हिमाली जिल्ला ताप्लेजुङमा पर्ने मेवाखोला साँबा गाउँ हो। जहाँ यिनीहरूको माङगेना यक अर्थात् लिङ थाङ यक रहेको छ। उनीहरू जहाँ रहे पनि पूजापाठ गर्दा लिङथाङ यकको नाम लिने गर्दछन्।

## १.२ साँबा परिचय

साँबाको शाब्दिक अर्थ पुजारी, सरदार हो। यो संज्ञा शिव, सबा (बाँदर/ पुर्खा) को अपभ्रंश हो। यसको जरा कोट्याउँदा यो नाम प्राचीन पर्सियामा शिव आस्था राख्ने सबियन्स जातिसित गाँसिएको पाइन्छ। (Thulung, 1985; Percy, 1951) यो साँबा नाम जम्मु कश्मीरका साँबा र कठुवा स्थानसित पनि गाँसिएको पाइन्छ। हाल त्यहाँ कश्मीरी लिम्बूको उपस्थितिले साँबा र कठुवा जस्ता किरात लिम्बू संज्ञा सन्दर्भिक छन्। स्मरण रहोस् जम्मु–कस्मिर क्षेत्रमा अझै पनि कस्मिरी लिम्बूको उपस्थिति रहेको तथ्य एक वेभसाइटले जनाउँछ। (Limbu translation services, 2002)

यसै गरी जुम्ला क्षेत्रको साँबालोलमा र सुनसरी कोकाहा बराहा क्षेत्रमा पाइएका ढुङ्गाका मूर्तिबीच सम्बन्ध भेटिएको छ। (Oli, 1988) साँबा शब्द बराहा माङ (देव), कोकाहा माङसित सम्बन्धित रहेको तथ्यलाई उक्त पुरातात्विक प्रमाणले बल पुऱ्याउँछ। (Subba, 2023)

किरात लिम्बू समुदायमा ३७५ भन्दा बढी थर, उपथर छन्। (LimbuPeople, 2021) त्यसमध्ये साँबा एक थर हो। हालसम्मको अध्ययनको आधारमा साँबा थरभित्र पनि १८ (अठार) उपथर छन्। यद्यपि यसमा कोही नाम जुध्न सक्लान्, कोही छुटेका पनि होलान्। भविश्यमा अनुसन्धानले सङ्ख्या थपघट हुनसक्दछ।

यत्रो संख्या देख्दा सबै साँबाका पुर्खा एकै हुन् जस्तो लाग्न सक्दछ। ख्याल गर्नु पर्ने कुरा के छ भने वंश वा वंशावलीभित्र रक्तगत नाता भएका भ्राता र मिसलभाइ (मानसपुत्र) दुवै प्रकारका भाइ सदस्य छन्।

विभिन्न स्रोतका आधारमा साँबाका उपथरहरू निम्नानुसार छन् – चङबाङ, लुङहिम्बा, फेन्छाङ्वा, फयङ, काईदाङ्बा, मिक्केन्दाङ, मादेन, तङदप्पा, स्रेङ, मुदेन्छङ, तेस्येबा, वेत्नेबा, पाक्साँवा, तुम्साँवा, लेगुवा, साँबाहाङ, ताप्मादेन र हिनाहाङ साँबा। (Chongbang Samba, 2009; Samba Mingshra, 2018; Sembu, 2014; Tumbahang, 2011)

हालसम्म यी साँबामध्ये चङबाङ, मुदेन्छङ र फयङ साँबाको वंशावली मात्र प्रकाशमा आएका छन्। तीन वंशावली अध्ययनको आधारमा निकटतम पुर्ख्यौली हाँगा छुट्टिएर बनेका साँबा आठ उपथरहरू चङबाङ, लुङहिम्बा, फेन्छङवा, फयङहाङ, काइदाङबा मिक्केन्दाङ, मादेन र तङदप्पा हुन्।

यी सबैको माङ्गेना यक मेवाखोला साँबा गाउँमा अवस्थित लुङथाङ यक हो। यिनीहरू कश्यप गोत्र वा काँशीगोत्रे वा काशीवंशका हुन्। (Thulung, 1985; Chemjong, 2003a) त्यसैगरी साँबासेरेङका सन्तान स्रेङ, सोलङ्गेन, ताम्मादेन, लाबुङ, मुदेनहाङ, मिफेङगेन साँबा पनि फयङका रक्तअनन्या साँबा वंश हुन्। (Sen Chobegu, 2007) उनीहरू आपसमा छुट्टिएका सगोत्री हुन्।

## १.३ लिङथाङ यक

फयङ साँबा परिवारको पैत्रिक स्थललाई माङ्गेना यक भनिन्छ। यो मेवाखोला स्थित साँबा गाउँमा रहेको छ। जसलाई लिङथाङ यक भनिन्छ। (Chongbang, 2009)

ऐतिहासिक तथा सांस्कृतिक विवरणका आधारमा, लिङथाङ यकबाट विभिन्न साँबा थर उद्भव भएका हुन्। उक्त स्थान साँबा जातिको माङ्गेना यक हो। त्यसैले यो स्थानलाई साँबाको मुनातेम्बे पनि मानिन्छ।

माङ्गेना यकमा सम्बन्धित पारिवारिक थर, उपथरहरूले कुलपूजा गर्ने गर्दछन्। वर्तमानमा त्यहाँबाट टाढा छरिएर बसेका परिवारका सदस्यले पनि घरमा पूजाआजा गर्दा आफ्नो पैत्रिकस्थल माङगेना यक अर्थात् लिङथाङ यक नामोच्चारण गर्ने गर्दछन्। अतः लिङथाङ यक साँबा परिवारको पवित्र आराध्यस्थल हो।

ताप्लेजुङ मेवाखोलाको साँबा गाउँमा अवस्थित लिङथाङ यक धेरै साँबा उपथरहरूको माङगेना यक हो। साँबा परिवारमा धेरै सदस्य छन् जस्तैः चङबाङ, लुङहिम्बा, फेन्छङवा, फयङहाङ, काइदाङबा मिक्केन्दाङ, मादेन, तङदप्पा तथा अन्य साँबा। उनीहरूले उक्त लिङथाङ यकलाई माङ्गेना यक भन्दछन्।

जनश्रुतिअनुसार त्यहाँ नजिक साँबाका पुर्खा फेम्बुनहाङको वासस्थल (यक) रहेको र उनले पूजा गर्ने ढुँङ्गालाई लिङथाङ यक भनिएको हो। साँबा परिवारले उक्त स्थानमा रहेको ढुङ्गा (लिम्बू भाषामाः लुङ्ग) लाई लिङ थाङ यक (भावार्थः साँबा उम्रेको स्थान) पितृस्थलको रुपमा बुझ्दछन्। उक्त ढुङ्गाको ऐतिहासिक फोटो चङबाङ साँबा वंशावलीमा प्रकाशित छ। (Chongbang, 2009)

मेवाखोला साँबा वडा न.९ मा अवस्थित उक्त लिङथाङ यक ढुङ्गे डाँडामा रहेको एक चुच्चे ढुङ्गालाई लिङथाङ यक भनिन्छ। त्यसकै नजिक साँबा पुर्खा फेम्बुनहाङको निवास पायक रहेको पितृले पूजा गरेको उक्त ढुङ्गालाई आज साँबा उत्पत्ति भएको स्थलको रूपमा चिनिन्छ। (Chongbang, 2009)

टाढैबाट देखिने उक्त चुच्चे ढुङ्गालाई लिङथाङ यक अर्थात् उम्रदै गरेको ढुङ्गाको रूपमा देखिन्छ। वर्तमान अवस्थामा उक्त स्थान सम्याएर आधुनिक यक हिम मन्दिर भवन बनाइएको छ। ढुँङ्गाको प्राकृतिक रूप अब फोटोमा सीमित भएको छ।

# अध्याय २ साहित्यिक पुनरावलोकन

## २.१ अफ्रिका बाहिर नमूना

अफ्रिका बाहिर' सिद्धान्त एक यस्तो वैज्ञानिक सिद्धान्त हो जसले आनुवंशिकी, भाषाविज्ञान र पुरातत्विक प्रमाणहरूका आधारमा आधुनिक मानव (होमोसेपियन्स) प्रजाति कसरी विश्वभर वितरित र विकसित भए भन्ने व्याख्या गर्दछ। (University of Cambridge, 2007) उक्त सिद्धान्त अनुसार सर्वप्रथम १ लाख ५० हजार वर्षपूर्व पूर्वी अफ्रिकामा आधुनिक मानिसका प्रजाति देखा परे। त्यसबेला मानवजाति अफ्रिकी महादेशको उत्तर, दक्षिण र केही पश्चिम क्षेत्रमा विस्तारित भए।

पूर्वी अफ्रिकाबाट विभिन्न समूहमा मानिस उत्तर र पश्चिम अफ्रिकातिर फैलिए। त्यहाँबाट तिनीहरू अफ्रिकाभर विस्तारित भए त्यसका साथसाथै संसारभर छरिए। फैलने क्रममा ८९,००० वर्ष अघिसम्ममा अफ्रिकाभर फैलिसक्न लागे तापनि १ लाख वर्षपूर्व नै दक्षिणी चीन र ७५ हजार वर्षपूर्व भारत (जवालपुरम्) सम्म फैलिसकेका थिए।

उक्त सिद्धान्तअनुसार प्रागैतिहासिक कालको होमोसेपियन्स आजभन्दा ८५ देखि ७५ हजार वर्षपूर्व उत्तरपूर्वी अफ्रिकाको इथियोपिया तथा एरिट्रियाबाट रक्तसागर पार गरेर अरब प्रायदिप आइपुगे। त्यहाँबाट उनीहरू अझ अघि बढे। उनीहरू पर्सियन खाडी पार गरेर इरान, पाकिस्तान र दक्षिण एशियामा फैलिए।

तिनीहरू इन्डोनेशियासम्म फैलिए। त्यहाँबाट एक समूह पुनः फर्किएर आयो र दक्षिणी चीनमा फैलियो।

इण्डोनेसियाको तोबा ज्वालामुखी विस्फोट (७५–७०,००० वर्षअघि) महाप्रलय थियो। उक्त घटनाको करिब १ हजारवर्षपछि मात्र मानव जाति तङ्ग्रिन थाले। अफ्रिका बाहिर पूर्वी एशियामा फैलिएका मानिस इण्डोनेसियामा ७५,००० देखि ७०,००० वर्षअघि इण्डोनेसियाको तोबा ज्वालामुखी विस्फोटबाट उत्पन्न पछिल्लो हिमयुगको अन्त्यपछि मात्र दक्षिण एशियातिर फैलिए। तिनीहरू चीनको महासागरीय तटबाट चीनको भित्री भूभागमा क्रमशः फैलिएर चीनको तिब्बतसम्म आइपुगे। करिब ७३ देखि ६५ हजार वर्ष अघिको महाप्रलयपछि मानवजाति पुनःस्थापित हुँदै आए।




**GLOBAL JOURNEY**

Once modern humans began their migration out of Africa some 60,000 years ago, they kept going until they had spread to all corners of the Earth. How far and fast they went depended on climate, the pressures of population, and the invention of boats and other technologies. Less tangible qualities also sped their footsteps: imagination, adaptability, and an innate curiosity about what lay over the next hill.

Generalized route with migration dates

200,000 50,000 20,000 2,500 years ago

आजभन्दा ६०,००० वर्षपूर्व मानवजातिको एक हुलले अफ्रिका महादेश छाडेको प्रमाण पाइन्छ। त्यो हुल पाकिस्तान र उत्तरपश्चिमी भारतीय भूभागमा आइपुग्यो। ५०,००० वर्षअघि मानिस उत्तरपश्चिम भारतबाट उत्तरपूर्वी भारत, बर्मा, थाइलैण्ड हुँदै अष्ट्रेलिया पुगे। आजभन्दा ४५ देखि ४० हजार वर्षपूर्व धेरै तरङ्गमा मानिसहरू फैलने क्रम जारी रह्यो। यही क्रममा चीनको किनाराबाट भित्री भूभागमा तथा जापानमा जनसङ्ख्या फैलियो। भारतको दक्षिणी भूभागबाट उत्तरी भूभागमा जनसङ्ख्या फैलियो। त्यहाँबाट बर्मा हुँदै नेपाल लगायत हिमाली तथा तिब्बती भूभागमा जनसङ्ख्या फैलिएको थियो।

यसरी 'अफ्रिका बाहिर' ढाँचाअनुसार होमोसेपियन्स अफ्रिकाबाट १००,००० देखि ७०,००० वर्षअघि संसारमा फैलिएको विश्वास गरिन्छ। उत्तर पाषाण युग अर्थात् ईशापूर्व ४०,००० देखि ईशापूर्व १०,००० सम्मको (Upper Paleolithic 40,000 BC-10,000 BC) कालखण्डमा नियन्डरथल प्रजातिलाई मानवको पछिल्लो प्रजाति आधुनिक मानिस (Neolithic) होमोसेपियन्स (Homo Sapiens) ले विस्थापित गरिदियो।

आजभन्दा ३५,००० वर्षअघि मानवजातिको एक अर्को समूहहरू रुस, मङ्गोलिया, चीन हुँदै बर्मा, कोरिया र जापानतिर बढ्यो। त्यसैबेला मङ्गोलियाबाट एक समूह भारतको सिन्ध घाँटी, काशी हुँदै दक्षिणतिर भारतको मध्यभागसम्म आइपुग्यो। त्यसपछि पुनः भारत, नेपालमा दुई दिशाबाट मानवजातिको आगमन भयो। एउटा पूर्वीमार्ग बर्मा, बङ्गलादेश भएर भारत तथा नेपालमा मानिसको आगमन सुरू भयो भने अर्को मार्ग पश्चिममार्ग इरान, पाकिस्तानबाट भारत, नेपालमा मानिस प्रजातिको आगमन सुरू भयो। (Jurmain, 2008)

उल्लिखित 'अफ्रिका बाहिर' सिद्धान्त विवरणबाट हाम्रो दिमागमा एउटा रेखाचित्र बन्दछ। मानिसको साङ्गपाङ्ग परिवहन कहाँ कहिले भयो भन्ने थाहा हुन्छ। मानिस किन छरिए भन्ने कारण वैज्ञानिकहरूले बताएका छन्। जनसंख्या वृद्धि भएपछि चलेको आपसी युद्ध, जलवायु

परिवर्तन, प्राकृतिक प्रकोप जस्तै बाढी, सुख्खा, अनिकाल, महामारी आदि प्रमुख कारण थिए। फलस्वरूप, सुरक्षित र उर्वर स्थानको खोजीमा मानिस अफ्रिकाबाट चारैदिशा फैलिएका हुन्। (University of Cambridge, 2007)

## २.२ मेसोपोटेमिया सभ्यता

प्राचीन सभ्यताभित्र प्रवेश नगरी इतिहासलाई अवलोकन गर्न सक्दैनौँ। यद्यपि यो विषय वृहद भएकाले केवल यसको सामान्य परिचय मात्र यहाँ दिइएको छ। पुस्तकका लेखभित्र सान्दर्भिक तथ्यहरू मात्र उल्लेखित छन्।

किरात इतिहासको जरो लामो छ यसले धेरै सभ्यताहरू छिचोल्दै आएको छ । किरात पुर्खा सुमेर, काशी, रुद्र, दास, असुरका पदचिन्ह मिश्रको सभ्यता, मेसोपोटेमियाको सभ्यता, बेबोलिनको सभ्यता, सिन्धुघाँटी हड़प्पा सभ्यता, वैदिक, उत्तरवैदिक सभ्यता तथा चीन सभ्यताभित्र भेटिन्छन्।

ईशापूर्व ६००० मा Tigris/ Euphrates नदीको घाँटीमा एउटा सभ्यताको विकास भयो, जसलाई मेसोपोटेमिया सभ्यता भनिन्छ । यो भूभाग हाल इराकमा पर्दछ । यो सभ्यतालाई सुमेरिया, बेबोलोनिया, असिरिया र चाल्डीयन चार भागमा बाँड्न सकिन्छ।

## २.३ सुमेरिया सभ्यता

प्राचीन कालमा फारसको खाडी Persian gulf को उत्तरी क्षेत्रलाई सुमेर वा सुमेरु क्षेत्र भनिन्थ्यो। Tigris/Euphrates नदीले बगाएर ल्याएको मलिलो माटोको कारण यो भूमि उब्जाउ थियो। त्यसकारण यो क्षेत्रमा विभिन्न जाति आई बस्न थाले। (Chemjong, 2003a)

यहाँ बस्नेमा प्रमुख सुमेरियन जाति थिए। ती सुमेरियन जाति को थिए भन्ने सवालमा विद्वानहरूको विभिन्न मत पाइन्छ। कसैले यिनीहरू चीनका बासिन्दा भनेका छन्। कसैले भारतबाट आएका द्रविड मानेका छन्। तर विद्वानकरूका मतमा ती जाति आर्य र सिमेटिक Semitic दुवै जाति होइनन्। (Chemjong, 2003a)

इतिहासकार चेमजोङले सुमेरलाई किरातका पुर्खा बताएका छन्। (Chemjong, 2003a) सांस्कृतिक विश्लेषण गर्दा सुमेर जाति मरेको मानिसको लाससितै मृतकलाई मनपर्ने सामग्री गाडिदिन्थे। (Kafle, 1983) अन्त्येष्टिका आधारमा केलाउँदा ती सुमेर जाति किरात पूर्वज भएको थाहा हुन्छ।

## २.४ बेबोलिनिया सभ्यता

इतिहासकार मायाप्रसाद काफ्ले अनुसार ईशापूर्व २७५० मा बेबोलिनियालाई अक्कड जातिले विजय गरे। उनीहरूले सुमेर क्षेत्रलाई समेत आफ्नो क्षेत्रमा गाभे। त्यहाँ राजा सारगनले ईशापूर्व २७१७ सम्म शासन गरे र त्यसपछि नरमसिन राजा भए। (Kafle, 1983)

ईशापूर्व २२०० मा उक्त अक्कड राज्यमाथि Semetics को अर्को एक शाखा एमोराइटले अधीनमा लियो। उनीहरूले बेबिलोनलाई राजधानी बनाए। त्यसबेला समाजमा उच्च, मध्यम र दास गरी तीन वर्गका मानिस थिए। समाजमा स्त्री र पुरूषको स्थान समान थियो। (Kafle, 1983)

यिनीहरू लेख्दा दायाँबाट बायाँतिर लेख्दथे। साहित्यको पनि विकास भएको थियो। त्यसबेला महाकाव्य ‘गिलगमेस’ को रचना भयो। बेबिलोनका मानिसलाई त्यसबेला यजुर्वेद र स्वास्थ्य विज्ञानको जानकारी थियो। वैद्य शुल्क लिएर उपचार गर्ने गर्दथे। उपचारका क्रममा उनीहरू जादु र

टुनामुना समेत प्रयोग गर्दथे। (Kafle, 1983)

## २.५ सिन्ध हरप्पा सभ्यता

मानव जातिको बसाइँ सराइँ मनसुनी वायुको लहरजस्तै वर्षेनी विस्तारित भएको थियो। यही क्रममा एक मानव शाखा मध्यपपूर्वबाट मध्यएशिया हुँदै सिन्ध हड़प्पा, गंगा मैदान, भारत र हिमालयतिर बढेको प्रमाणहरूले बताउँछन्।

प्राचीन सिन्ध–हड़प्पा सभ्यता ईशापूर्व ३३०० देखि ईशापूर्व १७०० सम्म सिन्धुघाँटीदेखि विभिन्न स्थानमा फैलिएको थियो। त्यहाँ कृषि व्यवसाय प्रमुख थियो। यसका अतिरिक्त विभिन्न व्यवसायमा मानिसहरू आबद्ध थिए। त्यसबेला मानिसहरू कृषक, व्यापारी, श्रमिक, राजमिस्त्री, पुरोहित, सुरक्षाकर्मी, वास्तुकार, कुम्भकार, धातुकर्मी, जलहारी, सफाई कर्मचारी, तान बुन्ने बुनकर, मूर्तिकार, रङ्ग साजसज्जा गर्ने कामदार, नाविक, शासक, चुरा बनाउने चुरौटे, शैल्य चिकित्सक, नर्तक, ईंटा बनाउने मजदूर आदि हुन्थे। (Kafle, 1983)

सिन्ध हड़प्पाक्षेत्रमा ईशापर्वू ३३०० देखि ईशापूर्व १७०० कालीन शिव, पशुपतिका चिन्ह फेला परेका छन्। स्वस्तिकाको आराधना गरिने गरिएका चिन्ह र प्रमाण उत्खननमा भेटिएका छन्। सिन्ध–हड़प्पा सभ्यतामा मानिस शिव, प्रकृति र मातृशक्तिका उपासक थिए। त्यसबेला प्रचलित पशुपति, साँढे, नाग, प्रजनन् शक्ति, पानी, रुख, पशुपंक्षी, स्वस्तिक चिन्ह आदिको उपासना गरिन्थ्यो। त्यसबेला यज्ञ र पशुबलिको प्रथा भएको प्रमाण भेटिएका छन्। (Kafle, 1983)

राज्यमा पुरोहितको विशेष भूमिका हुन्थ्यो। हड़प्पा सभ्यताका मानिस कर्मकाण्ड र अनुष्ठानमा विश्वास गर्ने गर्दथे। मानिस त्यसबेला काल्पनिक रुपमा मिश्रित पशु र मानवको उपासना पनि गर्दथे। पशुपति मोहडाले सन्यासवाद वा समाधि वा योगको महत्वलाई दर्शाउँछ। (Kafle, 1983)

यस सभ्यताका मानिस मृत्युपछि पनि जीवन र पुनर्जन्ममा विश्वास गर्ने गर्दथे। यसैले मृत मानिसको चिहानमा मानिसलाई चाहिने वस्तु र प्रिय वस्तु पनि सँगै गाडी दिन्थे। सिन्ध–हड़प्पेली मानिस अदृश्यशक्ति, भूतप्रेत, राक्षस वा त्यस्तै अहितकारी शक्तिको कल्पना गर्ने गर्दथे। हड़प्पा सभ्यतामा धार्मिक विविधता भए पनि आपसमा सहिष्णुता थियो। यसैकारण यो सभ्यता विकसित अवस्थामा पुगेको इतिहासकारहरूको मत छ।

सिन्ध–हड़प्पासभ्यतामा शिव, पशुपति, शिवलिङ्ग, मातृशक्ति आदिको उपस्थिति देखिएकाले त्यहाँ किरात वंशको उपस्थिति रहेको सिद्ध हुन्छ।

सिन्ध हरप्पा क्षेत्रमा आर्यको आगमन ई.पू. १७००–ई.पू. १५०० मा मात्र भएको थियो। इण्डो–आर्यनले सर्वप्रथम पञ्जाब उपत्यका आक्रमण गरेको प्रमाण भेटिएको छ। सिन्धु हड़प्पाक्षेत्रमा आर्य प्रवेश भएपछि मात्र संस्कृत भाषा र साहित्यको विकास भयो। पछि सोही भाषामा वेद, मन्त्र आदि ई.पू. १५०० देखि ई.पू. ५०० सम्मको कालखण्डमा रचना भयो। यही वैदिक धर्मबाट कालान्तरमा सनातन र हिन्दु धर्ममा विकासित भयो। (Sanijit, 2011)

## २.६ चिनियाँ सभ्यता

इतिहास अनुसार भूमध्यसागरीय क्षेत्रमा ईशापूर्व ३३००–१२०० तिर फक्रेको कास्य युगको पतन विभिन्न कारणबाट भयो।

एकातिर बाढी, भूकम्प, जलवायु परिवर्तनले ल्याएको खडेरीजस्ता प्राकृतिक प्रकोपले सभ्यता प्रभावित भयो। अर्कातिर मानवसिर्जित अन्तरवर्गीय द्वन्द्व, व्यापार व्यवस्था सङ्कट, बाहिरी शक्तिको सामुन्द्रिक घुसपैठ तथा आक्रमण प्रमुख कारणहरू थिए जसले सभ्यताको पतन गरायो। यसका साथै राजनीतिक तनावसमेतले भूमध्यसागरीय सभ्यताको पतन भयो। त्यसपछि त्यहाँका

मानिस मलिलो जग्गाको खोजीमा विभिन्न दिशामा छरिए। (Mark, 2019)

चीनको हुवाङ–हो (Yellow River) नदीको माथिल्लो भूभागमा ई.पू. ३००० देखि ई.पू. २००० मा एउटा गतिलो सभ्यताको उदय भयो जो माजियाओ संस्कृति (Majiayao Culture) को नामले चिनिन्छ । उत्तरी हुवाङ–हो नदी क्षेत्र, पूर्वी गान्सु, र उत्तरी सिंचुवान क्षेत्रमा काँस युगीन (ई.पू. ३१००–ई.पू. २७००) ऐतिहासिक सामग्री उत्खननबाट प्राप्त भएका छन्। (Duan et al., 1998)

उत्खननबाट प्राप्त भाँडाकुँडा, सङ्ख, एवम् लिखित प्रमाणका आधारमा भन्न सकिन्छ कि ई.पू. २१०० देखि ई.पू. १६०० अवधिमा चीनमा एक सभ्यता विकसित अवस्थामा थियो। (Sheth & Khushboo, 2017)

## २.७ काशी वंश खाम्बोङ्बा जातिको पृष्ठभूमि

काशी भनेको गंगा मैदान हो भन्ने धेरै मानिसको बुझाइ छ। कुरो सत्य हुँदाहुँदै पनि यो बुझाइ अपूर्ण छ।

काशी भनेको प्राचीन निकटपूर्वी (टर्की) निवासी हुन् जसले बेबिलोन १६९५ देखि ईशापूर्व ११५५ सम्म कब्जा गऱ्यो। (Bryce, 2009) त्यहाँ यिनीहरूको सुमेर (सुमेर) सित रक्तमिश्रण भयो। (Pokhrel, 1998) सुमेर प्रभाविक किरात र काशी प्रभावित कश्यप, खस, शक आदि भए। यिनीहरू मध्य–एशिया (ताक्लामकान), भारतमा पुगेपछि त्यहाँ पनि यिनीहरू बस्ने स्थानलाई काशी भनियो। यसकारण काशी भनेको काशी वंश बस्ने प्राचीन स्थान हुन्। ती प्राचीन स्थल मेसोपोटेमिया (सुमेर), मध्यएशिया (ताक्लामकान) र भारत (गंगामैदान) मा थिए र छन्।

भारत नजिक भएकाले तथा हिन्दु सांस्कृतिक प्रभावले हाल हामी काशी भन्नाले केवल गंगा मैदानलाई बुझ्दछौँ। यद्यपि, काशी शब्द मेसोपोटेमियादेखि गंगामैदानसम्म जोडिएको जातिबोधक, नश्लबोधक र संस्कृतिबोधक संज्ञा हो जसले काशी वंशको पितृस्थल जनाउँछ।

काशी वंश अर्थात् कश्यप गढन्त (Coinage) क्यास्पियन सागर आसपास बस्ने जाति भएको आधारमा बनेको हो। (Thulung, 1985) यो काशी संज्ञाले काशी वा कश्यप जातिको अघिल्लो भौगोलिक उपस्थिति क्यास्पियन सागर जनाउँछ।

Figure  SEQ Figure * ARABIC 1 काशी क्षेत्रहरू

Figure  SEQ Figure * ARABIC 1 काशी क्षेत्रहरू

किरात इतिहास अनुसार काशी वंश किरात मेदिया (वर्तमान पर्सिया) देशको दक्षिणी भूभागमा बस्दथे। उनीहरू त्यहाँ प्राचीन मुनातेम्बेबाट आएका थिए। (Chemjong, 2003b) उनीहरूले आफू बसेको स्थानको नाम काशी राखे। उनीहरूको आफ्नै राजा हुन्थ्यो। ईशापूर्व १५७० मा यिनीहरूले प्राचीन बेबोलिन चढाई गरे र राज्य विजय गरे । यी काशी वंशलाई ईशापूर्व १३०० मा पुनः दक्षिण–पूर्वका एलामहरूले हराए र त्यहाँबाट काशी वंशलाई विस्थापित गरिदिए। यसरी काशी स्थानबाट विस्थापित हुँदा काशी वंशका नामदिवेर नामका राजपुरोहित थिए। उनकै नेतृत्वमा काशी वंशका किरात पूर्व (अफगानिस्तान) तर्फ लागे।

ईशापूर्व १४०० तिर दक्षिण पर्सिया र ड्रभिडियन मुलुकबीच बन्दव्यापार चल्दथ्यो। त्यसैले उनीहरूले भारतवर्षको चर्चा सुनेका थिए। यिनीहरू वर्तमान अफगानिस्तानको गोलकु (काबुल) मा आएर बसे। त्यहाँ राजपुरोहित नामदिवेरको देहवसान भयो। उनले मृत्युअघि सबैलाई भेला गरी उनका दुई पुत्र राखेर अर्ती उपदेश दिए।

यो काशी वंशको एक हाँगो पछि सिन्धुघाँटी हुँदै गंगा मैदानमा गयो र त्यहाँ १२ पुस्ता शासन गऱ्यो। त्यहाँबाट एउटा हाँगाले बनारसमा सुकी गंगाजी नामक स्थानमा राज्य स्थापित गऱ्यो। हाल काशीथाङ्बा किरात लिम्बूका पुर्खा यिनै काशी वंशलाई मानिन्छ। त्यहाँबाट एक हाँगो उत्तर हिमालयतर्फ लाग्यो। उनीहरू सिमाङगढ हाल नेपालको बारा जिल्लामा पर्ने सिमरामा आई बसे। त्यहाँ उनीहरूले तराई जंगल फाँडेर १२ गाउँ बसाले।

समय बित्दै जाँदा त्यहाँ तिनीहरूको जनसङ्ख्या धेरै भयो र आपसमा मनमुटाव पनि बढ्यो। राजपुरोहितको अनुमतिले लौहचन्द र महाचन्द त्यहाँबाट छुट्टिए। महाचन्दले डोटी र लौहचन्दले प्युठानमा राज्य स्थापित गरे। ईशापूर्व ८०० मा यलम्बरले काठमाडौँ उपत्यकामा शासन गरे। खिम्चिले सुनकोशी नदी वरिपरिको जङ्गल फाँडी राज्य स्थापना गरे जुन क्षेत्रलाई त्यसबेला नामदोपालु र किरात प्रदेश भनियो।

Figure SEQ Figure * ARABIC 2 काशी आस्था प्रवाह रेखा

Figure SEQ Figure * ARABIC 2 काशी आस्था प्रवाह रेखा

## २.८ आख्यातात्मक ऐतिहासिक आधार

इतिहासकारद्वय माबोहाङ र ढुङ्गेल (1990) अनुसार उहिल्यै हेमन्तभूमिमा स्वयम्भू मनु र माता सतरुपाका एक पुत्र मङ्गोल जन्मियो। मङ्गोलका (१) मुनाइङ्बा (२) थोबोइङ्बा र (३) योबोइङ्बा तीन छोराहरू भए। हेमन्तभूमि गर्मी भएकाले सन्तान फैलाउन उनीहरू अन्यत्र फैलिने निधो गरे। (Mabohang & Dhungel,1990)

जेठो मुनाइङ्बाको छोरो किरातइङ्बा परिवार त्यहाँबाट पश्चिमतर्फ हिन्द महासागरवारि हुँदै सीमान्तभूमिमा पुगेर बसोबास गर्‍यो। माइला भाइ थोबोइङ्बाका सन्तान उत्तरतर्फको हिमालपारि किपु रुस खण्डमा गयो, त्यहाँबाट चीन, ल्हासा, उत्तर मङ्गोलियातर्फ फैलिएर बस्यो। कालान्तरमा माइला थोबोइङ्बाका सन्तान चीना, चावा, तुक्पा र भोटिया भए। उता कान्छा योबोइङ्बाका सन्तान भने दक्षिणतर्फ ज्वालामुखी पर्वत पार गर्दै दक्षिण मङ्गोलिया, जापान, श्याम, बर्मामा कोचीन जाति भइ दक्षिणपूर्व दिशातर्फ फैलिए। (Mabohang & Dhungel,1990)

माबोहाङ र ढुङ्गेल (1990) अनुसार सीमान्तभूमिमा छुट्टिएर मङ्गोलका नाति, मुनाइङ्बाका छोरा किरातइङ्बाका १० भाइ छोरा भए। ती दश भाइ छोराहरू- याक्तुम्बा, अप्लिवा, याक्खाबा, लुङफेवा, याङफेवा, सुहाचेप्पा, गुरुप्पा, मगप्पा, थोक्लेप्पा र थाङदावा हुन्।

समय बित्दै जाँदा यलम्बरको पालामा यिनीहरूको कुल फुट हुने समय आयो। कुल फुट हुने क्रममा याक्तुम्बाका सन्तानबाट याक्तुम्बा, अप्लिवाका सन्तानबाट अठपरे राई, याक्खाबाका सन्तानबाट याक्खा, लुङफेवाका सन्तानबाट लहरूङ, याङफेवाका सन्तानबाट याम्फू, सुहाचेप्पाका सन्तानबाट सुनुवार, हायु र चेपाङ उद्विकास भए। यसैगरी गुरुप्पाका सन्तानबाट गुरूङ, मगप्पाका सन्तानबाट मगर, थोक्लेप्पाका सन्तानबाट थाकाल थोकल (थकाली) र थाङदावाका सन्तानबाट थारु र दनुवार आदि उद्विकास भए। (Mabohang & Dhungel,1990)

छोटकरीमा भन्नुपर्दा, किरात पुर्खा अफ्रिकाबाट मेसोपोटेमिया हुँदै पूर्व सरेका हुन्। यही क्रममा मुन्धुमको सृष्टि वा रचना ग्रीसबाट आरम्भ भएको र मध्यएसिया, चीनमा यो विकसित भएको विश्लेषण गर्न सकिन्छ। किरात पुर्खाको केही हाँगा चीनमा पुग्यो। उनीहरूले त्यहाँ पुगेर आफ्ना पुर्खास्थल मुनातेम्बे सम्झिए, जुन किरात मुन्धुममा वर्णित छ। (Chemjong, 2003a; 2003b)

मुन्धुममा वर्णित पुराकथामा जुन सुन, चाँदीको मानिसको कथा छ, त्यो ग्रिसेली मिथकमा समेत मिलेकाले मुन्धुम र ग्रिसेली मिथक तुलनीय छन्। सुन, चाँदि तथा घटनाका प्रतीक र विम्बहरू लक्षार्थ हुन्। जेहोस्, मुन्धुममा मानव रचना सम्बन्धी पुराकथा र ग्रिसेली मिथक तुलनीय र सम्बन्धित देखिन्छन्। (Subba, 2022)

मुन्धुममा चीन (तिब्बत सहित), सप्तसिन्धु, गङ्गामैदान, र किरात लिम्बुवानका विभिन्न स्थलहरूका प्रभाव परेका छन्। अर्कातिर, आदिवासी किरात मुन्धुम साहित्यलाई संस्कृत साहित्यले अनुवाद गरेर आफ्नो बनाए भन्ने भनाइ छ। (Kalyanaraman, 2019) जेहोस्, किरात भाषा, मिथक र मुन्धुमले संस्कृत साहित्यलाई टेवा दिएको छ।

नवौं दशौं शताब्दीतिर मुन्धुमको लेखन राजा सिरिजङ्गाको पालामा भएको किरात इतिहासले बताउँछ। किरात पुराकथाको गहिराइ ग्रिससम्म गहिरो भए तापनि बहुसङ्ख्यक मुन्धुम बाह्रौंदेखि

अठारौं शताब्दीमा भयो। धार्मिक तथा साहित्यिक साहित्य आदिभौतिका काल अर्थात् बाह्रौंदेखि अठारौं शताब्दीमा भएको समाजशास्त्रीका पिता मानिने अगष्टे काम्तेको विश्वास छमानवशा। सोही आधारमा किरात लिम्बू मुन्धुम पनि त्यही कालमा बढी रचना भए भन्न सकिन्छ।

किरात जाति किरात लिम्बुवान राज्यमा स्थापित भएपछि मुन्धुममा स्थानीयताको प्रभाव पर्न गयो। अहिले मुन्धुममा स्थानीयताको स्वर तीव्र रूपमा सुनिन्छ। मुन्धुममा लिम्बूका विभिन्न थरका उद्भवस्थललाई मुन्धुमले उक्त थर वा उपथरको मुनातेम्बे कहिदिँदा त्यस्तो भ्रम सिर्जना भएको हो। यो किरात लिम्बूमा परम्परागत रुपमा बोन दर्शनको प्रभाव मान्न सकिन्छ। बोनले जीववाद र आत्मवाद मान्दछ। जीववादी दृष्टिद्वारा हरेक स्थानीय प्राकृतिक वस्तु हिमाल, पहाड, ढुङ्गा, माटोमा आत्मा, पितृ, देवता देखिन्छन्। यही दर्शनलाई आत्मवादी फेदाङ्बा/मा, साँबा, धामीझाक्रीले स्थापित गरिदिएका हुन्।

यसबाट के थाहा हुन्छ भने शिवलाई थेबा, तागेरा निङ्वाभु माङ वा कुलगुरू मान्ने किरात आदिकालदेखि जीववाद र आत्मवादमा आधारित बोन धर्मबाट प्राचीनकालदेखि नै प्रभावित थियो जुन हालसम्म निरन्तर छ।

## २.९ भाषाशास्त्रीय आंकलन

प्राचीन नेपालमा निग्रो जाति र तिनका भाषा नै पहिलो भाषाको रुपमा रहेको भाषाशास्त्री विश्वास गर्दछन्। (UpadhyayRegmi, 1990) उनीहरूलाई कालान्तरमा द्रविड भाषीले विस्थापित गरिदिए। (Logan, 1853)

एक दिन ती द्रविड भाषीलाई पनि अस्ट्रोएसियन भाषीले सीमान्तकृत पारिदिए। (UpadhyayRegmi, 1990) नेपालमा द्रविड र अस्ट्रोएसियाली परिवारका भाषा बोल्ने प्राचीन आदिवासी बसोबास गर्दछन्।

कालान्तरमा भोटबर्मेली भाषा परिवारले नेपालमा बोलिने द्रविड, अस्ट्रोएसियाली भाषालाई विस्थापित पनि गरिदियो। चाखलाग्दो कुरो के छ भने भोटबर्मेली भाषा बोल्ने किरात मङ्गोल पनि अघि नेपालमा बोलिने द्रविड, अस्ट्रोएसियाली भाषा बोल्ने गर्दथे। (Logan, 1853; UpadhyayRegmi, 1990)

यद्यपि, चीन, तिब्बतबाट बहुल संख्यामा भोटबर्मेली भाषीको प्रवेशपछि उनीहरूले प्रयोग गर्ने भाषाले अघिल्लो भाषा विस्थापित गरिदियो। फलस्वरुप द्रविड, अस्ट्रोसियाली भाषा लगायतका प्राचीन आदिवासी भाषाहरू क्रमसः लुप्त हुँदै गए।

नेपाल एकिरण भएपछि भारोपेली भाषा परिवारले भोटबर्मेली भाषा परिवारलाई पनि क्रमसः विस्थापित गरिदियो। हाल भोटबर्मेली भाषा परिवारको स्थिति पनि सीमान्तकृत बन्दै गएको छ।

यद्यपि, भारोपली भाषा परिवार अन्तर्गत आर्यभारतीय भाषा खस भाषा र आदिवासी जनजीवनसंग भाषिक रुपमा समेत अन्तरसम्बन्ध स्थापित भएको छ। फलस्वरुप नेपालमा मौलिक नेपाली भाषाको उदय भएको छ।

## २.१० किरात इतिहासको रूपरेखा

किरात भूमिलाई इतिहासमा किरात देशले सम्बोधन गरिएको इतिहासकार इमानसिंह चेमजोङ भनाइ छ। इसापूर्व ४००० तिर इजिप्टका राजा स्नेफेरुले आफ्नो देशमा पहिलो पिरामिड बनाए। त्यसैबेला पर्सियन खाडीको उत्तरी मैदान (हालको इराक/ इरान) मा दुई खालका सभ्य जाति बसोबास गर्दथे। उत्तरी मैदानमा बस्नेलाई अकादवंश (अक्कड) र दक्षिणी मैदानमा बस्ने जातिलाई

सौमरवंश (सुमेर) भनिन्थ्यो। (Chemjong, 2003c)

यिनीहरूको आ–आफ्नो नगर थियो, राजा थिए। सौमर जातिलाई उसबेला मङ्गोल जाति पनि भनिन्थ्यो। सौमर नदीमा बाँध बाँधेर खेतीपाती गर्ने गरिन्थ्यो। सौमर जातिले लिपिको विकास पनि गरेका थिए। उनीहरू ढुङ्गालाई उभ्याएर शिलालेखमा अक्षर लेखेर सूचना जारी गर्ने गर्दथे। (Chemjong, 2003c)

सौमर जाति र अक्कड जाति आपसमा लडाइँ झगडा गरिरहन्थे। लडाइँमा हारेपछि सुमेर जाति उसको दास बनेर बस्नुभन्दा अर्कै भूभागमा सर्दथे। यसै क्रममा सौमर/ मङ्गोल को एक ठूलो हाँगो सर्दै जाँदा चीनमा पुग्यो र क्राइष्टपूर्व ३००० मा एक सबल चीन राज्यको स्थापना गऱ्यो। सौमर/ मङ्गोलको अर्को हाँगो पनि त्यहाँबाट छुट्टिएर काबुल, पञ्जाब हुँदै गङ्गामैदानमा पुग्यो। त्यो समूह काशी गङ्गामा कैयौँ पुस्ता बसोबास गऱ्यो। यिनै सौमर/ मङ्गोललाई पछि आर्यले किरात नामले सम्बोधन गरे। (Chemjong, 2003c)

एउटा चाखलाग्दो तथ्य यहाँ उल्लेख गर्न जरुरी छ। इतिहासकार चेमजोङ अनुसार अघि अफगानिस्तानका कूर्द, किरात र खस एकै वंशका थिए। (Chemjong, 2003a)

एक किरात किंवदन्ती अनुसार सौमर वंश काबुलमा आइपुगे र बसोबास गर्न थाले। त्यसबेला यिनीहरू हिन्दु वा मुसलमान धर्म मान्दैनथे। सौमर हुद्दाको जेठो भाइको नाम लाले हाङ थियो। ऊ तल गङ्गामैदानतिर गएर उक्त स्थान बस्नयोग्य छ छैन बुझ्न जान्छु र फर्कन्छु भनेर त्यसतर्फ झऱ्यो। (Chemjong, 2003a)

अरुलाई काबुलमै छाडेर जेठो भाइ लाले हाङ गङ्गामैदान लाग्यो। उसले गङ्गामैदान पुगेर हेर्दै बुझ्दै जाँदा त्यहाँ बस्न उपयुक्त ठान्यो र त्यहीँ बस्न थाल्यो। उसको समुहले गङ्गामैदानमा जमेर राज्य गऱ्यो तर उनीहरू कसैले काबुल फर्केर आफ्ना परिवारका वंशलाई बोलाएनन्। गङ्गामैदानमा कैयौँ पुस्ता बसेपछि तिनीहरू हिमालयतर्फ लागे। उनीहरू कालान्तरमा हिन्दु, खस, गोर्खा भए। (Chemjong, 2003a)

यता काबुलमा बस्ने सौमर वंश कमजोर हुँदै गए । यिनीहरूलाई पठानले विजय गरे र मुसलमान बनाइए । यिनीहरू हजारे नामले अफगानिस्तानमा बसोबास गर्दछन् । आज पनि हजारेले गोर्खालीलाई भेट्दा काकाजी वा चाचाजी नाताले सम्बोधन गर्ने गर्दछन्। (Chemjong, 2003c)

यसबाट किरात र खस मात्र हैन अफगानिस्तानमा बसोबास गर्ने हजारेबीच रक्तगत–अनन्या स्थापित रहेको थाहा हुन्छ।

किरातको ससी मुन्धुम अनुसार सौमर/ किरात तीन दिशाबाट हुद्दाका हुद्दा भएर आए। यिनीहरूले हिमालय, पहाड र तराईमा आफ्नो बासस्थान बनाए। पश्चिम दिशाबाट आउने काशी वंश/ खाम्बोङ्बा/ खाम्बोज भए। पूर्वबाट आउने ताईस्यान वंश/ ताङसाङथाज/ ताङसाङ्बाज/ मङ्गोल भए। उत्तरबाट आउने ल्हासावंश/ मुनाफेन/ चिनियाँली/ भोटेली भए। (Chemjong, 2003c)

यीमध्ये काशी वंश खाम्बोङ्बा किरात सबभन्दा पहिले आइपुगेका हुन्। उनीहरू द्वापर युगपूर्व आएका थिए। यिनीहरूले किरात देशको स्थापना गरेको तथ्य महाभारतमा उल्लिखित छ। त्यसपछि नेपालमा क्रमशः ताईस्यान वंश र ल्हासा वंशको प्रवेश भयो। यिनीहरूको किरात वंशसित रक्तमिश्रण भयो। उल्लिखित कतिपय किरात खसमा सम्मिलित भए। यिनीहरू पश्चिम दिशाबाट पसेका काशीगोत्रे हुन्। (Chemjong, 2003c)

खाम्बोङ्बा किरातीले किरात देश स्थापना गरे। यिनीहरूलाई भुइँफुट्टा पनि भनिन्थ्यो। छैटौँ शताब्दीमा किरात देश विघटन भएर दश लिम्बुवान गठन भयो। लिम्बुवान गठनताका त्यहाँ ल्हासागोत्रे प्रवेश भइसकेको थियो। यसकारण ल्हासागोत्रेको प्रवेशपछि दश लिम्बुवान आरम्भ भएको थियो। सातौँ सताब्दीमा ल्हासागोत्रे किरात लिम्बू सुनकोशी पूर्व, टिस्टा पश्चिम, दक्षिण मोरङ कन्काईसम्म फैलिसकेका थिए। (Chemjong, 1974, 2003c)

सातौँ शताब्दीमा नेपाल आक्रमण गर्ने तिब्बतेली माराङहाङले चालेको युद्ध रणनीति विचार गरौँ। उनलाई किरात इतिहासमा कतै मावाराङ पनि भनिन्छ जुन नामबाट हालको मोरङ नाम रहेको थियो। उनैका पालामा रङ्गोली अर्थात् हालको रंगेली नाम रहेको किरात इतिहासले

बताउँछ। उनका पुर्खा काठमाडौँबाट विस्थापित किरात राजा थिए। यिनै किराती राजाका दरसन्तान माराङहाङे नेपालमा बौद्ध धर्म फैलाउने निँहुले भेदिया खटाएर लिम्बुवानभित्र ल्हासागोत्रेलाई भित्रभित्रै हातमा लिए। यसरी माराङहाङले लिम्बुवानलाई पहिलो पटक ल्हासागोत्रे र काशीगोत्रेमा विभिजित गरेका थिए। (Chemjong, 1974; 2003c)

अंशुबर्मा/ अंशुबर्मनको मृत्यु (ई.स. ६४०) भएपछि सातौ शताब्दीमा स्रङचङ गम्पोको समर्थनमा माराङहाङले तिब्बती सैनिक बलको सहयोगमा किरात लिम्बुवान चढाइ गरेका थिए। त्यसबेला किरात लिम्बुवानमा बस्ने ल्हासागोत्रे लिम्बूहरू आक्रामक पक्षतिर लागे। फलस्वरुप आपुङ्गी राजाहरू भोटेली शत्रुको शरणमा पर्नु पर्‍यो। (Chemjong, 2003c)

माराङहाङले राज्य दक्षिणमा मिथिला, पूर्वमा सोङडोकपु पहाड, पश्चिममा हथौडा पहाड र उत्तरमा खम्पाजोङसम्म फैलाए। उनले खाम्पाजोङमुनि रादोकलाई गृष्मकालीन दरवार र सानगढी (साँगुरी धनकुटा)लाई शिशिरकालीन राजधानी बनाए। उनले राज्यमा बौद्ध धर्मको प्रचारप्रसार गरे। (Chemjong, 1974, 2003c)

यसरी किरात इतिहासमा सातौँ शताब्दीमा काशीगोत्रे र ल्हासागोत्रे किरात लिम्बूबीच पहिलोपटक रणनीतिक युद्ध भएको थियो।

## २.११ वंशावली तथ्य र पुरातत्व

हाङसेनलुङ धनकुटा जिल्लामा पर्ने एक ऐतिहासिक किरात स्थल हो। यो स्थानमा छैटौँ शताब्दीमा दश लिम्बुवान गठनपछि दश सरदारहरू भेला भएर एउटा ढुङ्गा गाडेर चिनो राखेका थिए। सेन मकवान वंशका दश सरदारहरूले लिम्बुवान गठन गरेर दश थुम विभक्त गरे। प्रत्येक थुममा सरदारहरू राजा छानिए। त्यसपछि उनीहरू आ-आफ्नो थुम लागे। जसलाई हामी हाङसेनलुङ भन्दछौं। (Chemjong, 2003a; Tumbahang, 2011)

किरात इतिहास अनुसार चौधौँ शताब्दीमा चौदण्डी चतराका सेन वंशका राजकुमारहरू पहाड उक्लने क्रममा त्यहाँ आए। यो धनकुटाको बोधे गाउँमा पर्ने तेलिया खोला, छरुवा खोला र तम्बर नदीको सङ्गमस्थलमा पर्दछ। उनीहरू त्यहाँ केही वर्ष बसेर फेरि उकालो लागे। उनीहरूले उक्त ठाउँ छाड्ने बेलामा चार जनाले एकेक ढुङ्गा गाडेर गए। त्यस स्थानलाई हाङसेनलुङ टार भनिन्छ। किरात भाषामा हाङ अर्थ राजा, सेन अर्थ वंश र लुङ अर्थ ढुङ्गा हो।

धनकुटा जिल्ला बोधे गाउँस्थित हाङसेनलुङलाई किरात लिम्बू जातिका विभिन्न वंशावलीले आफ्नो पुर्खाका महत्वपूर्ण अनुचिन्ह रहेको स्थल मानेका छन्। किरात सेनेहाङ लिम्बू (चबेगु) वंशावली र योङहाङ वंशावलीले यो स्थानलाई आफ्ना पैत्रिक चिन्हस्थल दाबी गरेका छन्। योङहाङ वंशावली अनुसार त्यहाँ चार भाइ सेनेहाङले चारढुङ्गा गाडेर छुट्टिएका थिए। वंशावलीअनुसार उनीहरू त्यहाँबाट छुट्टिएर एकभाइ पोक्लाबाङ, एकभाइ याङरुप र दुईभाइ तम्बरखोला, मेवाखोला लागे। उक्त हाङसेनलुङ संज्ञामा सेन नाम पनि जोडिएको हुँदा सेनेहाङ चारभाइले ढुङ्गा गाडेको तथ्यलाई जनाउँछ। (Yonghang, 2011)

सेन चबेगु लिम्बूले पनि उक्त स्थानलाई आफ्ना पुर्खाको एक अनुचिन्ह रहेको ऐतिहासिक स्थलको रुपमा दाबी गरेको छ। सेनवंशी समुदाय किरात सेनेहाङ थेगिम लिम्बू वंशावली तथा इतिहास (वि.सं. २०६४) ले आफ्ना पुर्खा सेनवंशी अभिसेन (उदीमसेन) को इतिहास पहिल्याएको छ। अभिसेन पछि क्रमशः पदमसेन, लारासेन, फोरासेन र चुडामणिका नाम उल्लिखित छन्। (SenChobegu, 2007, p228)

सेन चबेगु वंशावली अनुसार चुडामणि सेनका चार सन्तान सेनेहाङ्ग, साँबासेन (साँबासेरेङ), सुरदसेन र मणिसेन थिए। ती चारजना चौदण्डी कोशीबराह क्षेत्रबाट साँगुरी नाघेर धनकुटा जिल्लाको बोधे गाउँ वडा न. ५ तम्बर खोलाको किनार सधाममा गएर बसे। त्यहाँ बसेर छुट्टिने बेलामा सम्झनास्वरुप चार भाइले एक एक ढुङ्गा गाडेर छुट्टिए। (SenChobegu, 2007)

हाल त्यहाँ चारवटा ढुङ्गा गाडिएको स्थानलाई हाङसेनलुङटार वा हाङसेन मोरङटार भनिन्छ।

जसमध्ये तीनओटा ढुङ्गा विधर्मीहरूद्वारा वि.सं. २०१२ सालमा नष्ट गरियो भन्ने बुढापाकाले भनाइ वंशावलीमा उल्लेख छ। (Sen Chobegu, 2007)

योङहाङ वंशावलीअनुसार चार भाइ सेनेहाङ वि.सं. १३८८ मा साँगुरी भञ्ज्याङ नाघे। त्यहाँबाट उनीहरू भित्री पहाड सङ्गमटार पुगेर बसोबास गरेका थिए। (Yonghang, 2011)

योङहाङ तथा सेन चबेगु वंशावली अनुसार सेनवंशी चार भाइ सिमाङगढ (सिम्रौनगढ) बाट चौदण्डी/ चतरा हुँदै साँगुरी नाघेर सङ्गमटार पुगे। त्यहाँबाट एक भाइ धनकुटा हुँदै तम्बरखोलाबाट अलग्गिएर याङरुप पाँचथर लागे। पछि उनीहरूबाट योङहाङ, थेगिम भए। यसरी सेनेहाङका सन्तानमध्ये पाँचथर याङरुपमा छुट्टिएका योङहाङ र थेगिम उद्‌विकास भए।

यसरी सेन र राईको पदवीधारी पुर्वजका सन्तान याङरुपमा योङहाङ, थेगिम र लिङदेन थरमा उद्विकास भएका हुन्। (Yonghang, 2011; SenChobegu, 2007) बाँकी दुई भाइ सेनेहाङमा एकजना मेवाखोला र अर्का भाइ तम्बरखोला लागे। उनीहरूबाट साँबालगायत अन्य लिम्बू विकसित भए।

हाङसेनलुङबारे चबेगु समुदायले चासो र चिन्ता व्यक्त गरेको छ । यसका चार ढुङ्गामध्ये तीनवटालाई कसले किन कहिले नष्ट गर्‍यो भन्ने चासो व्यक्त गरिएको छ। हुन त यो किरात–सेन–लिम्बू धरोहर हो। सेनेहाङ तथा दश सरदारका दरसन्तानका मात्र सरोकारको विषय यो होइन। यो सबै नेपालीको ऐतिहासिक गाथा र नेपाली सम्पदा हो। ऐतिहासिक सम्पदाको संरक्षण गर्नु हामी सबैको दायित्व र चुनौति हो।

कतिपय पाठकलाई हाङसेनलुङ केवल लिम्बुवान गठन गर्ने सेन मकवान दश सरदारको अनुचिन्ह भनी इतिहासमा पढेको बताउँछन्। फलस्वरुप अन्य याक्थुङ वंशावलीमा यसको चर्चा आउँदा शङ्का उपशङ्का गर्ने गर्दछन्। भौगोलिक अवस्थिति मुल्याङ्कन गर्दा उक्त स्थान पहाड, मदेश प्रवेश गर्ने एक नाका हो। मदेशबाट पहाड उक्लँदा देखिने शीतल स्थान हो। यो स्थान तीन नदीको त्रिवेणी स्थल भएकोले प्राकृतिक रुपमा सुन्दर पनि छ।

भौगोलिक तथा रणनीतिक कारणले महत्वपूर्ण स्थलमा विभिन्न कालखण्डमा महत्वपूर्ण ऐतिहासिक घटनाहरू घट्न सम्भव छ। इतिहासमा कुनै एक घटना घटेपछि अर्को महत्वपूर्ण घटना सोही स्थानमा भएगरेका अन्य धेरै दृष्टान्त पाइन्छन्। अतः हाङसेनलुङलाई किरात सेन र दस लिम्बुवानका नेताहरूले विभिन्न समयमा आएर चिन्ह छाडेका हुन्।

पुरातात्विक प्रमाणसम्बन्धमा संस्कृतिविद् सोमप्रसाद खतिवडा (S. N. Khatiwada, Personal communication, Oct 16, 2019) अनुसार चतरामाथि वयरवन जङ्गलमा सेन राजाहरूको लालकोट रङ्गमहलको अवशेष पाइन्छ। त्यहाँ सेनहरूको सैनिक भएको चिन्ह फेला नपरे तापनि उनीहरूको धनसम्पत्ति लुकाउने कक्ष तथा वासस्थल भेटिएको उनको भनाइ छ।

कोशीबराह क्षेत्र चतरामाथि जङ्गलमा रहेको उक्त सेन दरबारको भग्नावशेषलाई आफ्ना पुर्खाहरूको नासो दरबार भएको किरात सेन चबेगु लिम्बू वंशावलीले दाबी गरेको छ। (SenChobegu, 2007)

अतः कोशी बराह क्षेत्र तथा चौदण्डि चतरा किरान–सेन–साँबा इतिहास र सभ्यता हुर्केको एक उर्वर क्षेत्र हो।

## २.१२ किरात

किरातको शाब्दिक अर्थ समूहगत रुपमा गढ बनाएर बस्ने जाति हो। संगठित भएर बस्ने मानिसका रुपमा चिनिएका जनसमूह त्यसबेला किरात नामले चिनिए। (The New Biblical Atlas and Scripture Gazetteer, 1860)

प्रचलित आख्यानले किरातीलाई पनि 'कि–रा–वा' अर्थात् सिंह, बाघ जस्ता शक्तिशाली जीवतुल्य बताउँछ। 'मोङ्' को अर्थ जङ्गली राजा सिंह हो, जसबाट मङ्गोल बनेको छ। (Thulung, 1985) भाषाशास्त्री बालकृष्ण पोखरेल अनुसार किरातका पूर्वजले यही सिंह प्रभाव लिबिया, लेबनानबाट आउँदा ल्याएका थिए। (Pokhrel, 1998)

माथिका भनाइबाट किरात समुदाय सिंह आस्था रहेका जाति हुन् भन्ने थाहा लाग्दछ। किरात इतिहास पढ्दा पनि यी जाति अरुसित लड्ने, भिड्ने, राज्य हात पार्ने जस्ता घटनाक्रममा लगाव रहेको देखिन्छ। उनीहरूका इतिहासमा उल्लिखित घटनाक्रमबाट उनीहरूको जीवन शैली, मूल्य, मान्यता युद्धप्रेमी भएको वा सिंह आस्था रहेको पुष्टि हुन्छ।

लामो कालखण्ड पार गर्दै जाँदा किरात संज्ञाको अर्थमा व्यापकता आयो। हुन त यो नाम अरूले नै राखिदिएको जस्तो लाग्दछ। किनभने यो शब्द मुन्धुममा नभएर संस्कृत साहित्यमा पाइन्छ। हाल यसले सामान्यतयाः जाति वा वंश जनाए पनि यसभित्र राष्ट्रियता, संस्कृति र सभ्यता समेत लुकेको छ।

लिम्बू जातिले गैरलिम्बूलाई आफ्नो परिचय दिँदा आफूलाई लिम्बू बताउँछन् तर समुदायभित्रै परिचय गर्दा आफूलाई याक्थुङ बताउँछन्। समाजशास्त्रमा लिम्बू शब्द इटिक र याक्थुङ शब्दलाई इमिक शब्द भनेर बुझिन्छ। त्यसैले किरात संज्ञा बाहिरियाले धेरै प्रयोग गरेको इटिक शब्द हो।

## २.१३ याक्थुङ

याक्थुङ भित्रीया शब्द अर्थात् इमिक शब्द हो। यसको शब्दार्थ पनि किरात शब्दसंगै मिल्दोजुल्दो छ। याक्थुङ शब्द भोट–बर्मेली भाषा परिवारमा व्युत्पन्न भएको शब्द हो।

'यक' भनेको लिम्बू भाषामा गढ हो। थुम, थुम्बा भनेको बस्ने ठाउँ, वीर मान्छे हो । यसैले समूहगत रुपमा कुनै गढमा बस्ने वीर जाति वा पुरुष भएको समूह, वंश, जाति भन्ने अर्थ याक्थुङ शब्दले बोकेको छ। याक्थुङ शब्दले पनि कुनै गढमा समूह बनाएर बस्ने मानिस, वंश, वीर जाति भन्ने जनाउँछ। यसकारण शब्दार्थका आधारमा किरात र याक्थुङ पर्यायवाची शब्द हुन्।

लिम्बू समुदायभित्र बोलीचालीमा प्रयोग गरिने जातिबोधक संज्ञा 'याक्थुङ' हो। पुरूषलाई 'याक्थुङ्बा' र महिलालाई 'याक्थुङ्मा' भनिन्छ। लेखापढीमा 'किरात' र 'लिम्बू' शब्द बढी प्रयोग हन्छन्। बाहिरी समुदायका मानिसले 'याक्थुङबा' शब्द त्यत्ति प्रयोग गर्दैनन्। उनीहरू 'किरात' वा 'लिम्बू' शब्द नै बोल्न वा लेख्न सहज मान्दछन्। किनभने 'याक्थुङ्बा' शब्द भोट–वर्मेली भाषा परिवारको शब्द हो। त्यसैले भारोपेली भाषा परिवारका मानिसलाई यो शब्दोच्चारणमा असहज वा सुन्नमा श्रुतिकटु लाग्दछ।

यो शब्द लिम्बू भाषाको मौलिक शब्द भए तापनि नेपाली भाषाको लागि एक आगन्तुक नेपाली शब्द हो। यही शब्दलाई लिम्बू जातिले आफ्नो परिचायक शब्द मान्दै आएको छ। लिम्बू समुदायमा 'याक्थुङ' थर र उपथरको विशेष महत्व हुन्छ।

'याक्थुङ' शब्दको शाब्दिक अर्थ र 'किरात' शब्दको अर्थबीच समानता पाइन्छ। जसरी किरात शब्द गढसँग सम्बन्धित छ उसैगरी 'याक्थुङ्बा' शब्द 'यक्' र 'थुम्बा' दुई शब्दको योगले बनेको छ। 'यक' भन्नाले गढ, बस्ती, भूमि, राज्य बुझिन्छ भने 'थुम्बा', 'थुम' भनेको वीर, स्थान हो। यसर्थ यी दुईको मिश्रित शब्द याक्थुङले कुनै गढ वा बस्ती वा निवासी, वीर, राजा जनाउँछ।

त्यसैले 'याक्थुङ्बा' वा 'याक्थुङ्मा' शब्दभित्र अन्तर्निहित 'वीर' भावनाले हरेक लिम्बू जातिले आफ्ना जातीय पहिचान जनाउँछ। फलस्वरुप यो शब्दको शब्दोच्चारण गर्दा उनीहरू गौरव महसुस गर्दछन्। त्यसैले याक्थुङ संज्ञा लिम्बू जातिको एक मौलिक पहिचानमूलक शब्द मानिन्छ।

## २.१४ राई र लिम्बू

किरात राई र लिम्बू रक्तगत अनन्या मात्र नभएर सांस्कृतिक रुपमा एकै परिवारका सदस्य हुन्। राई र लिम्बू एकै परिवारका क्षेत्रीय नाम हुन्। सामान्यतया: अरुणपूर्वका धेरै राईहरू लिम्बू भए भने अरुण पश्चिमका राई (राजा) राई नै रहे। यसमा गोरखाविस्तार तथा नेपाल निर्माणको क्रममा

परेको सामाजिक तथा राजनीतिक प्रभाव पनि परेको छ।

राजनीतिक कारणले गर्दा किरातलाई राई निकट मानेर कतिपय लिम्बू किरात संज्ञासित तर्किन खोज्दछन्। खम्बुवानसित गाँसिएका राईलाई आफू लिम्बुवान राज्य पुनःप्राप्तिको रणनीति अनुरुप राई भन्दा भिन्न जाति भनेर इतिहासलाई अपब्याख्या गर्ने प्रवृत्ति हावी छ। इतिहासको एक कालखण्डमा गठित लिम्बुवान राज्य स्मरण गर्दै अरुण पूर्वका नौ जिल्लालाई संघीय नेपालमा पुनर्जीवित गर्न खोजिएको छ। फलस्वरुप किरात शब्द लिम्बूले प्रयोग गर्दा लिम्बुवान अभियान भुत्ते हुने भएकाले लिम्बूवान र लिम्बू जाति बताउने रणनीतिक चाल चालिएको हो।

थरलाई स्पष्ट पार्नभन्दा जटिल बनाउने काम समुदायका अगुवा र राजनीतिक कार्यकर्ताले गरेका छन्। भाषिक वाच्यार्थको दृष्टिले राई (राय=राजा) र लिम्बू (धनुधारी) दुवैअघि प्रशासकीय पदवी हुन्। लिम्बू आफूलाई हाङ (अर्थ राजा) वंश ठान्दछन्। राई र लिम्बू थरबीच राजवंशीय आपुङ्गी संस्कार छ। केही शताब्दी अघिसम्म राई र लिम्बू एकै वंश थिए भन्ने अनगिन्ति प्रमाण छन्।

नेपाल निर्माण अन्तर्गत गोरखा विस्तार भएपछि नै अरुणपूर्वका राईले लिम्बू लेख्न थालेको तथ्य पाइन्छन्। करिव २४५ वर्षअघिको शाहकालीन ऐतिहासिक सरकारी कागजातका उपलब्ध तथ्य र प्रमाणले राई लिम्बू सवालको जवाफ दिएको छ। (Shrestha, 1985)

उपरोक्त भनाइलाई समर्थन गर्ने अन्य तथ्य पनि पाइन्छन् । किरात लिम्बू संस्कृतिका ज्ञाता काजीमान कन्दङ्वा (१९८८) ले किरात लिम्बू वंशावलीका आधारमा राई नै पछि लिम्बू भएको एक लेखमार्फत् दाबी गरेका छन्। वंशावलीमा आजभन्दा ७ पुस्ताअघि कन्दङवाहरूका पुर्खा टटुवा राई, याङ्द्वा राई तथा पोना राई थिए, कन्दङ्वाको दावी छ।

त्यसै गरी आजभन्दा ८ पुस्ताअघि मेयाङ्बो, आङबुहाङ थरका किरात लिम्बूका पुर्खा नामित राई, मुगाम राई, चन राई, खन राई, सिन राई, ताला राई आदि थिए । आङदेम्बे, लाउती, इङ्नाम, तुम्वापो, शेर्मा थरका पुर्खाहरू कोच राई, राज राई, ओम राई, पाना राई थिए । थाम्सुहाङ तथा जवेगुका पुर्खा क्वाव राई, लाङभो राई तथा मिफोन राई थिए। यिनीहरू कोही ७ पुस्ता, कोही ९ र १० पुस्ता अघिका नाम हुन् । यी तथ्याङ्क आजभन्दा करिव २०० वर्ष अघिका आँकडा हुन्। (Kandangwa, 1988)

## २.१५ लिम्बू

लिम्बूको शाब्दिक अर्थ धनुर्धारी हो। किरात लिम्बू भाषामा 'लि' भनेको धनु र 'बु' भनेको हान्नु हो। किरात लिम्बू भाषामा 'लिम्' भन्नाले मीठो र 'बू' भन्नाले धनुकाण हान्नु जनाउँछ। यसैले लिम्बू जाति धनुकाँणप्रति लगाव राख्ने जाति रहेको भाषाले पनि सङ्केत गर्दछ।

लिम्बू र धनुबीचको अन्तरसम्बन्ध यिनीहरूले प्रयोग गर्ने सिरिजङ्गा लिपिमा पनि देखिन्छ। किरात लिम्बू भाषामा चार अङ्कलाई 'ली' भनिन्छ। सिरिजङ्गा लिपिमा पनि उक्त चार अङ्क जनाउने 'लि' वर्ण हो। चार अङ्कलाई 'ली' किन भनियो होला? जुन उनीहरूको जातीय नामको समध्वनि पनि हो। यसलाई विश्लेषण गर्दा धनुकाँणको ताँदो तान्दा चार औंलाले तानिन्छ। बायाँ हातले धनु समाएपछि त्यसमा रहेको तन्किने डोरीमा चार औंला राखेर आफूतिर तानिन्छ। यसैले चार अङ्क बुझाउन 'लि' वर्ण प्रयोग भएको हुनसक्छ। कुनै जात विशेषले चार औंलाको मद्दतले प्रहार गर्ने हतियारको नाम पनि उनीहरूको जातीय नामसित गाँसिएको सङ्केत प्रस्तुत 'ली' वर्णले गरेको छ।

हिन्दु धर्मशास्त्र महाभारतमा अर्जुनले हिमालयमा धनुर्धारी किरातसित युद्ध भएको थियो। सर्वश्रेष्ठ धनुर्धरी मानिएका अर्जुनले पनि हार खाएपछि उनले उक्त किरातलाई भगवान शिवको अवतारको रुपमा दर्शन गरेको वर्णन महाभारतमा छ। संस्कृत ग्रन्थले धनुर्विद्यामा सिद्धहस्त किरात

